

# मुसिकोट नगरपालिकाको दोश्रो नगरसभाको चौधौं अधिवेशनमा
# नगर उपप्रमुख श्री गंगा श्रेष्ठले
# प्रस्तुत गर्नुभएको



# आर्थिक वर्ष २०८०/८१ को बजेट वक्तव्य
## १० असार, २०८०




**मुसिकोट नगरपालिका**
**नगरकार्यपालिकाको कार्यालय,**
**वामीटक्सार,गुल्मी**

सभाध्यक्ष महोदय,
नगरसभाका सदस्यहरु,
उपस्थित महानुभावहरु ।

.

यस गरिमामय दोश्रो नगरसभाको चौधौ अधिवेशनमा मुसिकोट नगरपालिकाको उप प्रमुखको हैसियतले म आगामी आर्थिक वर्ष २०८०/८१ को बजेट प्रस्तुत गर्न उपस्थित भएको छु ।

१. सर्वप्रथम राष्ट्रियत हित, लोकतन्त्र प्राप्ति तथा संस्थागत विकासका लागि विभिन्न कालखण्डमा भएका राजनैतिक आन्दोलनमा जीवन उत्सर्ग गर्नुहुने सम्पूर्ण ज्ञात अज्ञात शहीदप्रति भावपूर्ण श्रद्धाञ्जली अर्पण गर्दछु । यस क्रममा भएका घाइते, अपाङ्ग, शहिद परिवार, बेपत्ता नागरिक र तिनका परिवारहरुलाई स्मरण गर्न चाहान्छु ।

२. राष्ट्रिय अर्थतन्त्रमा देखिएका समस्या एवं चुनौतीहरुलाई ख्याल गर्दै स्थानिय आर्थिक गतिविधिहरुलाई गतिशील बनाउने, निजी क्षेत्रलाई लगानीको वातावरण श्रृजना गर्ने र समृद्ध नगर निर्माणको अभियानलाई मजबुत आधार तयार हुने गरि आगामी आर्थिक वर्षको बजेट निर्देशित गरेको छु । आम नगरवासीको विकास र समृद्धिको चाहनालाई सम्बोधन गर्ने तथा आर्थिक सामाजिक भौगोलिक र राजनैतिक रुपमा पछाडि परेका वर्ग, क्षेत्र, लिङ्ग र समुदायलाई विकासको मुलप्रवाहमा ल्याई विकासको प्रतिफल समन्यायिक तरिकाले वितरण गर्ने तर्फ बजेट तथा कार्यक्रम लक्षित गरेको छु ।

३. आगामी बजेट आर्थिक समृद्धि, सुशासन र सामाजिक न्याय कायम गर्न लक्षित हुनेछ। प्रतिस्पर्धी क्षमता तथा तुलनात्मक लाभ उच्च भएका साना तथा घरेलु उद्योग प्रवर्द्धन गर्ने, युवालाई आर्थिक गतिविधिमा आबद्ध हुन अभिप्रेरित गर्ने, कृषिमा व्यवसायिकता,पर्यटन प्रवर्द्धन र उद्यमशीलताको विकास गरी गरिबी न्यूनीकरण गर्ने, सार्वजनिक सम्पत्तिको जगेर्ना गर्ने तथा स्रोत र साधनको प्रभावकारी एवम् परिणाममुखी परिचालन गर्ने दिशामा बजेट उन्मुख रहेको छ ।

४. मैले नगरपालिकाको आगामी आर्थिक वर्षको बजेट तर्जुमा गर्दा नेपालको संविधान, दिगो बिकासका लक्ष्यहरु, नेपाल सरकारको आर्थिक वर्ष २०८०/०८१ को नीति, कार्यक्रम तथा बजेट बक्तव्य, लुम्बिनी प्रदेश सरकारको आ.व. २०८०/०८१ को नीति, कार्यक्रम र बजेट बक्तव्य, बिभिन्न ब्यक्ति/संस्थाहरुबाट प्राप्त राय सुझाव, पन्ध्रौं आवधिक योजना, मुसिकोट न.पा.को प्रथम आवधिक योजना र मध्यमकालिन खर्च संरचना, संघ एवं प्रदेशका माननिय सदस्यज्यूहरुबाट प्राप्त राय सुझावहरुलाई मार्गदर्शनको रुपमा लिएको छु ।

५. नगरपालिकामा सक्रिय राजनीतिक दल, संघ संस्था, विद्वत्वर्ग, आम नागरिक, नागरिक समाज, निजी क्षेत्र, सञ्चार माध्यम लगायत सबैबाट प्राप्त राय सुझावलाई समेत आधार बनाएको छु। समृद्ध नगर निर्माणको आधार तयार गर्न विभिन्न रचनात्मक सुझाव र सहयोग गर्नु हुने सम्पूर्णलाई हार्दिक धन्यवाद व्यक्त गर्न चाहान्छु ।

६. मैले आगामी आर्थिक वर्षको बजेट तर्जुमा गर्दा आम नगरवासीहरुको विकास प्रतिको चाहाना र जनअपेक्षालाई सम्बोधन गर्ने  कार्यक्रमलाई प्राथमिकता दिएको छु । यसले आम नगरवासीमा आशा र भरोसाको सञ्चार गर्नेछ र  राजनीतिक दल, जनप्रतिनिधि, संघ संस्था, निजी क्षेत्र, नागरिक समाज, विकास साझेदार, सञ्चार जगत र आम नागरिकको सहयोग र ऐक्यवद्धताबाट  बजेटले लिएका लक्ष्य हासिल गर्न सकिने विश्वास लिएको छु।

सभाध्यक्ष महोदय,

अब म नगरपालिकाको विद्यमान आर्थिक अवस्था र चालु आर्थिक वर्षको बजेट कार्यान्वयनको समीक्षा सङ्क्षेपमा प्रस्तुत गर्ने अनुमति चाहन्छुः

७. गत आ.ब.२०७८।७९ मा कुल आय अनुमान ६७ करोड १ लाख ९९ हजार ५ सय १५  रहेकोमा यथार्थ आय रु. ६० करोड  ५२ लाख ३७ हजार २ सय ७५ रहेको थियो । उक्त अवधिमा  वास्तविक खर्च चालु तर्फ ३५ करोड ६३ लाख ५५ हजार ३ सय ४७ अर्थात ८६.७४ प्रतिशत र पुँजीगत तर्फ २१ करोड ५६ लाख ४९ हजार ४ सय ६ अर्थात ८३.१३ प्रतिशत रहेको थियो । गत आ.ब.मा कुल विनियोजन बजेट मध्ये ५७ करोड २० लाख ४ हजार ७ सय ५४ अर्थात ८५.३४ प्रतिशत वित्तिय प्रगति भएको थियो ।

८. चालु आ.ब.को कुल संसोधित अनुमान ७२ करोड ६२ लाख ५८ हजार २० रहेकोमा हालसम्मको यथार्थ आय रु ६२ करोड ३५ लाख ३७ हजार ९ सय ७२ रहेको छ । चालु आ.ब.को हालसम्मको खर्चलाई हेर्दा चालु तर्फ २९ करोड ५६ लाख ७० हजार ७ सय ९६ अर्थात ६६.६४ प्रतिशत र पुँजीगत तर्फ १३ करोड २८ लाख ५३ हजार ३ सय ९१ अर्थात ४७ प्रतिशत खर्च भएको देखिन्छ । समग्रमा चालु आ.ब.को यो अवधिसम्मा रु ४२ करोड ८५ लाख २३ हजार १ सय ८७ अर्थात ५९.१ प्रतिशत वित्तिय प्रगति भएको देखिन्छ ।

९. चालु आ.ब.को अन्त्यसम्म वित्तीय प्रगति चालु तर्फ ८२ प्रतिशत अर्थात ३६ करोड ३७ लाख ७२ हजार ३ सय १८ र पुँजीगत तर्फ ७६ प्रतिशत अर्थात २१ करोड ४८ लाख १ हजार २ सय ६३ हुने अनुमान गरिएको छ र जुन समग्र बजेटको ७९.६ प्रतिशत अर्थात ५७ करोड ८५ लाख ७३ हजार ५ सय ८२ हो । गत आर्थिक वर्षको तुलनामा यस वर्ष वित्तिय प्रगति करिब ५ प्रतिशतले कम हुने देखिन्छ ।

सभाध्यक्ष महोदय

अब म बजेटको सफल कार्यन्वयनमा समस्या पार्ने  मुख्य चुनौतीहरु सङ्क्षेपमा प्रस्तुत गर्न चाहन्छु ।

१०. प्रस्तावित बजेट तथा कार्यक्रमहरु जनअपेक्षित, समतामूलक, सहभागितामूलक र कार्यन्वयन योग्य  हुँदाहुँदै पनि देहायका कारणले बजेटको सफल कार्यन्वयन चुनौतीपूर्ण रहेको छ ।

- आन्तरिक आम्दानी अत्यन्त कम हुनु र संघ र प्रदेशको अनुदानको भरमा हाम्रा बिकास योजना तर्जुमा गर्नु पर्ने बाध्यताले आवश्यकता महसुस भएका र ईच्छाइएका योजनाहरुको लागि पर्याप्त बजेट व्यवस्था नहुनु,

- बढ्दो बसाइसराई एवं बैदेशिक रोजगारीको कारण खेती योग्य जमिन खाली हुदै जानु र कृषिमा व्यवसायिकरण र आधुनिकिकरण हुन नसक्नु,
- समूदायस्तरबाट माग हुने योजनाहरु र हाम्रा विकासको गन्तव्यमा तालमेल नहुनु,
- योजना अनुगमन तथा मूल्याङ्कन प्रणाली नतिजामूखि र वस्तुपरक हुन नसक्नु,
- तुलनात्मक लाभका वस्तुहरु पहिचान गरी उत्पादनलाई तिब्रता दिन नसक्नु,
- स्थानिय उपभोक्ता समितिको विकास प्रक्रियामा व्यवसायिकताको विकास हुन नसक्नु,
- हालका दिनमा इन्धनको मूल्यमा अत्यधिक बृद्धी, तरलता अभाव, विपद्/महामारी आदिका कारण लक्ष्य अनुरुप विकास गतिविधि सञ्चालन गर्न नसक्नु,
- सिपयूक्त र दक्ष जनशक्तिको पर्याप्त उपलब्धतामा समस्या हुनु
- साधारण खर्चमा वृद्धि हुँदै जानु, तलब भत्ता, प्रशासनिक खर्च लगायतको साधारण कुल बजेटको ठूलो हिस्सा छुट्याउनु पर्दा विकास कार्यका लागि स्रोत व्यवस्थापनमा चाप पर्नु,
- पुँजीगत खर्चको प्रभावकारिता बढ्न नसक्नु,
- योजनाको पूर्व तयारी र प्राथमिकीकरण नगरी साधन स्रोत छर्ने प्रवृति रहेको र कार्यान्वयन पक्ष कमजोर रहेकोले स्रोत साधनको समुचित परिचालन मार्फत सार्वजनिक खर्चलाई उपलब्धिमूलक बनाउन नसक्नु,
- निजी क्षेत्रको लगानी आशातित रूपमा वृद्धि हुन सकेको छैन। लगानीमैत्री वातावरण सिर्जना गरी स्वदेशी र विदेशी लगानी विस्तार गर्न नसक्नु,
- हाम्रो लक्ष्य र भावना अनुरुप निर्माण व्यवसायीले समयमै कार्य सम्पन्न नगर्नु , सम्पन्न कामको गुणस्तरमा समस्या देखिनु।

सभाध्याक्ष महोदय,

११. अब म नगरपालिकाको समग्र स्थितिको बारेमा जानकारी गराउन चाहन्छु।

(क) पहिलो स्थानिय तहको निर्वाचनबाट निर्वाचित टिमले समृद्ध नगर निर्माणको दिशामा प्राप्त गरेको उपलब्धीहरुलाई आत्मसात गर्दै बाँकी लक्ष्य प्राप्तीको लागि हामी निरन्तर प्रयासरत छौ। हाम्रा नीति कार्यक्रमको सफल कार्यन्वयन मार्फत हाम्रो दिर्घकालिन सोच "**मुसिकोट नगरको समृद्धिका आधारः सामाजिक विकास र न्यायसँगै कृषि,उद्योग,पर्यटन र पूर्वाधार**" लक्ष्य प्राप्तीको दिशामा नै अघि बढिरहेको महसुस भएको छ।

(ख) हाल सम्मका स्थानिय तहका कार्यानुभवको कारण आ.व. २०७९/०८० को बजेट र कार्यक्रम कार्यान्वयनको अन्तिम चरणमा आईपुग्दा स्थानिय तहको संबैधानिक व्यवस्थाको औचित्य पुष्टी भएको छ। कारण - शासन संचालनका धेरै पूर्वाधारहरु निर्माण भएका छन्।

(ग) चालु आ.व.मा कार्यान्वयन गर्ने गरी छनौट भई संचालित योजनाहरु कार्यान्वयनको अन्तिम चरणमा रहेका छन् ।उक्त योजना/कार्यक्रमहरु पूर्ण हुँदा नगरपालिकाको समग्र विकासमा उल्लेख्य प्रगति भएको महसुस हुनेछ।

(घ) गत आ.व.हरुमा गौरबका योजनाहरु लगायत प्रशस्तै अनुकरण गर्न लायक पूँजी निर्माणका कामहरु सम्पन्न भएका छन् । आगामी आ.ब.मा आर्थिक,सामाजिक र पूर्वाधार विकासको क्षेत्रमा थप पुँजी निर्माण हुनेछ।

(ङ) गत आ.व.मा बहुवर्षिय ठेक्का अन्तर्गत संझौता भई निर्माणाधिन प्रशासकिय भवनको चालु आ.व.को अन्त्यसम्म निर्माण कार्य सम्पन्न हुने र आगामी आ.व.२०८०/८१ को पहिलो चौमासिक देखि सोही भवनबाट सेवा प्रबाह हुने ब्यहोरा यस सम्मानित सभामा जानकारी गराउन चाहान्छु।। त्यस्तै १५ शैयाको आधारभूत अस्पतालको बहुवर्षिय ठेक्का प्रक्रिया भई निर्माणाधिन अवस्थामा रहेको छ र आगामी आ.ब.मा निर्माण कार्य सम्पन्न हुनेछ।

(च) सामाजिक विकास अन्तर्गत विद्यालयमा शैक्षिक गुणस्तर सुधारका लागि शिक्षक तालिमको सञ्चालन तथा शैक्षिक सामग्रीको वितरण कार्यमा जोड दिईएको छ। विभिन्न किसिमका नेतृत्व विकास तथा सीपमुलक तालिमको सञ्चालन र सम्पन्न, शिक्षक पदपूर्ति, दरबन्दी मिलान, प्र.अ. मिलान गर्ने कार्यलाई प्राथमिकताका साथ अगाडी बढाइएको छ।

१२. अव म आगामी आर्थिक वर्ष २०८०।०८१ को बजेटका उद्देश्यहरु प्रस्तुत गर्ने अनुमति चाहन्छु।

१३. माथि उल्लिखित चुनौती र अवसरलाई मनन् गर्दै सरकारी, निजी र सहकारी क्षेत्रको लगानी विस्तार गरी उत्पादन, उत्पादकत्व र रोजगारीका अवसर बढाउने, आर्थिक तथा सामाजिक पूर्वाधार निर्माण गरी उच्च आर्थिक वृद्धिको आधार तयार गर्ने तर्फ जोड दिएको छु। सार्वजनिक स्रोतको समुचित तथा उपलब्धिमूलक परिचालन गर्नुका साथै उपलब्ध अवसर तथा लाभको समन्यायिक वितरण गरी धनी र गरीब बीचको खाडल कम गर्नुपर्ने आवश्यकता महसुस गरी बजेटका उद्धेश्य तथा प्राथमिकता तय गरेको छु।

यसै सभामा आजकै मितिमा प्रस्तुत नीति तथा कार्यक्रम बमोजिम आर्थिक वर्ष २०८०।०८१ का बजेटका उद्देश्यहरु निम्नानुसार रहेका छन्।

- जनतामा उद्यमशिलताको विकास गरी स्थानीय अर्थतन्त्रलाई चलायमान बनाँउदै जनताको जीवनस्तर बृद्धि, आम्दानी र रोजगारीका अवसरहरुको सिर्जना गर्ने,
- लगानी मैत्री वातावरण निर्माण गरी निजी क्षेत्रको मनोवल उच्च पार्ने र आय तथा रोजगारीका अवसर सिर्जना गरी गरिबी न्यूनीकरण गर्ने,
- विभिन्न प्रकारका रोग र बिपदबाट नागरिकको जीवन रक्षा र जनजीवनलाई सुरक्षित बनाउने साथै जनताको मौलिक हक अधिकारको रक्षा गर्दै सामाजिक परिचालन र सामाजिक एकता कायम गर्ने, साथै लक्षित एवं सिमान्तकृत समुदायको उत्थान हुने गरि सामाजिक न्यायलाई केन्द्रमा राख्ने,
- उपलब्ध श्रोत/साधनहरुको अधिकतम प्रभावकारी रुपले परिचालन गर्दै विकासका सबै आयामहरु समेट्ने गरी योजना छनौट एवं बजेट बिनियोजन गरी कार्यान्वयन गर्ने,
- छनौट भएका योजना/कार्यक्रमहरुको कार्यान्वयन संयन्त्र निर्माण र अनुगमन/मूल्याङकन लाई प्रभावकारी बनाउने,

सभाध्याक्ष महोदय,

समृद्ध नेपाल सुखी नेपालीको राष्ट्रिय आकांक्षा, नगरवासीको विकास प्रतिको चाहना,स्थानिय आवश्यकता र समृद्ध नगरपालिकाको दिर्घकालिन सोचलाई समेत ध्यान दिएर आगामी आ.ब.को बजेट तथा कार्यक्रममा बजेटका प्राथमिकताहरुलाई देहाय बमोजिम राखेको छ ।

क. कृषि, सिँचाई,खानेपानी,ऊर्जा र पर्यटन क्षेत्रको विकास,

ख. सामाजिक क्षेत्रको विकास र सामाजिक सुरक्षा,

ग. गुणस्तरीय भौतिक पूर्वाधार निर्माण,

घ. वातावरण संरक्षण, जलवायु परिवर्तन र विपद व्यवस्थापन,

ङ. मानव संसाधन विकास र रोजगारी सिर्जना,

च. संस्थागत विकास र सेवा प्रवाहमा सुधार ।

सभाध्यक्ष महोदय,

१४.अब म आ.व.०८०/०८१ को संक्षिप्त आय विवरण तथा संचालन गरिने प्रमुख कार्यक्रमहरू र विनियोजित बजेट विवरण प्रस्तुत गर्न अनुमती चाहन्छु ।

आम्दानी तर्फः

राजश्व आम्दानी

(क)आन्तरिक राजश्व अनुमान रु २ करोड ४३ लाख,

(ख)संघिय राजश्व बाँडफाँड रु १०करोड २६ लाख ३१ हजार,

(ग) प्रदेश राजश्व बाँडफाँड रु १ करोड ४ लाख १७ हजार ८ सय ९६

(घ) अन्य आय १ करोड ५० लाख

जम्मा राजश्व बाँडफाँड रकम रु १५ करोड २३ लाख ४८ हजार ८ सय ९६,

नेपाल सरकार (संघिय सरकार) बाट प्राप्त हुने अनुदानः

(क)वित्तीय समानिकरण अनुदान रु ११ करोड १७  लाख,

(ख)संघिय शसर्त (हस्तान्तरित) रु ३४ करोड २५ लाख,

(ग)समपुरक अनुदान रु   करोड ८५ लाख,

(घ)बिशेष अनुदानरु ७० लाख,

जम्मा संघिय सरकारबाट प्राप्त हुने रु ४७ करोड ९७ लाख,

प्रदेश सरकारबाट प्राप्त हुने अनुदानः

(क) बित्तिय समानीकरण अनुदान - रु  ८० लाख १४ हजार,

(ख) सशर्त अनुदान - रु  १ करोड ६ लाख ५० हजार,

(ग) समपुरक अनुदान - रु १ करोड ५० हजार

(घ) बिशेष अनुदान -

जम्मा प्रदेश सरकारबाट प्राप्त हुने अनुदान रु ३ करोड ३६ लाख ६४ हजार,

यसरी आर्थिक वर्ष २०८०/०८१ को लागी नगरपालिकाको कुल आम्दानी तर्फ जम्मा रु ६६  करोड ५७ लाख १२  हजार ८ सय ९६  प्रस्ताव गरेको छु ।

१५. त्यसै गरी अव म प्रस्तावित बजेटको व्यय तर्फको विवरण पेश गर्दछु ।

कुल प्रस्तावित बजेट मध्ये चालु खर्च करिब रु. ४५ करोड १ लाख ८९ हजार रहेको छ भने पुजीगत खर्च २१ करोड ५५ लाख २३ हजार ८ सय ९३ रहेको छ ।

संघिय सशर्त, प्रदेश सशर्त र संघीय विशेष बाहेक नगरपालिकाले आफै बजेट तथा कार्यक्रम तर्जुमा गर्ने कुल रु ३० करोड ५५ लाख ६२ हजार ८ सय मध्ये चालु खर्च  रु १३ करोड २८ लाख ३९ हजार ३  र पूँजीगत खर्च १७ करोड २७ लाख २३ हजार ८ सय ९३ रहेको छ ।

त्यसैगरी प्रस्तावित बजेटलाई क्षेत्रगत रुपमा हेर्दा नगरपालिका आफैले बजेट तथा कार्यक्रम बनाउने रकम मध्ये सबैभन्दा बढी पूर्वाधार विकासमा करिब १३ करोड ७७ लाख २३ हजार ८ सय ९३ र सबैभन्दा कम सुशासन तथा अन्तर्सम्बन्धीत क्षेत्रमा रु १ करोड ३९ बजेट विनियोजन भएको छ । कार्यालय संचालन तथा प्रशासनिक तर्फ ७ करोड ३१ लाख, आर्थीक विकास तर्फ रु २ करोड २९ लाख ६२ हजार र सामाजिक विकास तर्फ रु ५ करोड ७८ लाख ७७ हजार ३ रहेको छ । जुन कुल नगरपालिकाको बजेटको क्रमशः २३, ८ र १९ प्रतिशत हुन आउँछ ।

१६. अब म आगामी आर्थिक वर्षको बजेटका मुख्य मुख्य क्षेत्रगत कार्यक्रम र विनियोजन प्रस्तुत गर्ने अनुमति चाहन्छु ।

**आर्थिक बिकास**

**कृषि**

१७. जमिन बाँजो राख्ने प्रबृतिलाई निरुत्साहित गर्दै निर्वाहमुखी कृषिमा आधुनिकीकरण, यान्त्रीकिकरण, व्यावसायिकरण गरी यसमा आश्रीत जनशक्तिको आर्थिक उपार्जनमा बृद्धि गरी आत्मनिर्भर कृषक बनाउनका लागि हाम्रो प्रयास जारी रहनेछ । नगरपालिकाको जमिन जथाभावी खण्डिकरण गर्ने प्रवृतिलाई निरुत्साहित गरिने छ । कृषिमा उत्पादन र उत्पादकत्व बढाउनको लागि उन्नत जातका विउको प्रयोग,सिचाइ सुविधाको विस्तार, माटो सुहाउँदो खेती प्रणाली, कृषि मेशिनरी कार्यक्रम आदिको लागी बजेट व्यवस्था गरेको छु ।

१८. नगरपालिकामा उत्पादित कृषि उपजहरुको बिक्रि बितरणमा सहजता ल्याउन **"कृषि उपज बिक्री सुनिस्चितता कार्यक्रम"** लाई निरन्तरता दिन रु १० लाख विनियोजन गरेको छु ।

१९. आगामी आ.ब.मा कृषि उपजको उचित भण्डारणको लागि शित भण्डारको व्यवस्था सहितको संरचना तयार गरिनेछ । यसको लागि रु १५ लाख विनियोजन गरेको छु ।

२०. कफिको लागि प्रशिद्ध मानिने यस नगरपालिकामा,**"कफी लगाऔ आम्दानी बढाऔ"** कार्यक्रम मार्फत कफीको उत्पादनलाई बृद्धि गरिनुका साथै कृषकहरुलाई प्रोत्साहन गरिनेछ । जसका लागि रु ५ लाख रकम विनियोजन गरेकी छु ।

२१. तुलनात्मक लाभका वस्तुहरु पहिचान र व्यवसायीकरणमा जोड दिन र स्थानिय उत्पादनबाट लघु उद्यम संचालन गर्न विशेष प्राथमिकता दिईएको छ ।

२२. फलफुल तथा मसला बाली खेती प्रबर्धन कार्यक्रम, च्याउको खेती प्रबर्धन कार्यक्रम, गोला सहित मौरी घार बितरण, अन्न बाली बिउ वितरण, बिदेशवाट फर्किएका युवाहरुको लागि लक्षित कार्यक्रम जस्ता गतिबिधिहरुको लागि कृषि कार्यक्रम केन्द्रित हुने गरी आवस्यक बजेटको ब्यवस्था गरेको छु ।

२३.विदेशबाट फर्कि आफ्नै गाउँघरमा रही व्यवसाय गर्ने कृषक तथा उद्यमीहरुका लागि "**आफ्नै गाउँ फर्की आउ**"कार्यक्रम मार्फत प्रोत्साहन तथा सम्मान गरिने छ । यसको लागी आवश्यक बजेट व्यवस्था गरेको छु ।

वैदेशिक रोगजार जाने युवालाई कृषि पेशा र लघु उद्दम विकासमा आकर्षित गर्न र बढ्दो बसाइसराइलाई न्युनिकरण गर्न **"पख्नुहोस तपाईको लागी हामी केही गर्दैछौ"** कार्यक्रमलाई अभियानको रुपमा अगाडी बढाउन रु ७ लाख बजेटको व्यवस्था गरेको छु ।

२४.चालु आ.व.मा संचालित **"गरिबी निवारणका लागि लघु उद्यम बिकास कार्यक्रम"** आगामी आ.व.मा पनि संचालन हुने ब्यहोरा यस सम्मानित सभामा जानकारी गराउन चाहन्छु । यसको लागी संघीय सशर्त बजेटका अतिरिक्त रु ७ लाख विनियोजन गरेको छु ।

२५. बाँदर, दुम्सी, बदेल लगायतका जंगली जनावरहरुले खेतिबालीमा गर्न क्षेति न्यूनीकरण एवं नियन्त्रणको लागि बन्यजन्तु नियन्त्रण प्रविधि खरिदमा अनुदानको लागि रु ५ लाख बजेट विनियोजन गरेको छु ।

२६. संघीय सरकार र प्रदेश सरकारको नीतिसंग तादाम्यता कायम हुने गरी नगरपालिका भित्र भूमि बैङ्क स्थापना गर्ने बिषयलाइ प्राथमिकता दिइनेछ । सो सम्बन्धी आवश्यक कार्यविधि निर्माण भइसकेकोले आगामी आ.व.मा कृषि/पशुपालनसंग सम्वन्धित व्यवसायी र उद्यम गर्न चाहने लघु,घरेलु तथा साना व्यवशायीलाई उक्त कार्यविधि बमोजिम भूमी बैङ्क मार्फत सुलभ तरिकाले जग्गा उपलब्ध गराउने व्यवस्था मिलाइनेछ । त्यसको लागि आवश्यक बजेटको व्यवस्था गरेको छु ।

२७.नगरपालिका भित्र रहेका सबै पर्यटकीय स्थलहरुको पहिचान, संरक्षण तथा निर्माण कार्यलाई प्राथमिकता दिइने छ । पर्यटन व्यवसायलाई प्रवर्द्गन गर्नको लागि पर्यटनसँग सम्बन्धित सूचना, संचार तथा प्रचार प्रसार गरिने छ । मुसिकोटको पर्यटनको केन्द्रमा रहेको मालिका क्षेत्रमा धार्मीक पर्यटन प्रवर्द्धन गर्न मालिका महोत्सव आयोजना गर्न आवश्यक व्यवस्था मिलाइनेछ । मुसिकोटको आन्तरिक पर्यटन गन्तव्यको रुपमा रहेको स्वाँरामा निर्माणाधिन शान्ति बौद्ध स्तुपा निर्माणको लागि रु १० लाख बजेट विनियोजन गरेको छु ।

२८.समग्र राष्ट्रले सहकारीलाई आर्थिक विकासको प्रमुख आधार स्तम्भ मानेको वर्तमान अवस्थामा मुसिकोट नगरपालिका भित्र छरिएको स-सानो पूँजीलाई नगरपालिकाको समग्र विकासका लागि संकलन गर्ने, परिचालन गर्ने, नियमन र अनुगमनको व्यवस्था साथै सहकारीको माध्यमबाट आर्थिक सामाजिक विकास गरी समुदायमा आधारित ग्रामिण आत्मनिर्भर अर्थतन्त्रको अवलम्बनको आवश्यकता छ । सहकारीसंग रहेको पूँजीलाई नगरपालिकाको बिकासमा लगानी गर्न उत्प्रेरित गरिनेछ ।

२९. आर्थिक विकास शिर्षक अन्तर्गत आगामी आ.व. २०८०/०८१ को लागि नगर तर्फ जम्मा रकम रु १ करोड ६६ लाख ६२ हजार बिनियोजन गरेको छु जुन नगर तर्फको कुल बजेटको २ प्रतिशत हुन आँउदछ ।

३०. "वेरोजगारीलाई निकासः आफ्नै ठाउँको विकास" भन्ने नारलाई आत्मसात गर्दै आगामी आ.ब देखि "निरन्तर रोजगार निरन्तर निर्माण र मर्मत सुधार कार्यक्रम" सञ्चालन गरिनेछ । स्थानिय श्रोत ,साधन र

श्रमको प्रयोग गर्दै सार्वजनिक निर्माण र सार्वजनिक सम्पदाको संरक्षण र सम्वर्द्धनमा निरन्तर कार्य गरिनेछ र यसका लागी रु ५० लाख विनियोजन गरेको छु ।

**सामाजिक विकास**

**शिक्षा**

३१. संबिधान बमोजिम आधारभूत र माध्यमिक शिक्षा स्थानिय तहको अधिकार अन्तर्गत पर्ने बिषय भएको र यस सम्बन्धी कानूनको तर्जुमा र कार्यन्वयन गर्ने एवम् शिक्षा  समाज रुपान्तरणको साधन भएको कारण शिक्षामा लगानी बिना मानब बिकास अपुरो रहन्छ । शिक्षा क्षेत्रमा बिभिन्न गतिबिधिहरु संचालन गर्न आवश्यक बजेटको व्यवस्था गरेको छु ।

३२. नगरपालिका भित्रका विद्यालयहरुलाई व्यवस्थित तवरले सञ्चालन गर्न आर्थिक अवस्था कमजोर भएका विद्यालयहरुको पुर्वाधारहरुको विकासका लागि पुनः निर्माण प्राधिकरण र संघिय विशेष अनुदान मार्फत विभिन्न विद्यालयका भवनहरु सम्पन्न भएका छन् । एक मात्र नमूना माध्यमिक बिद्यालय (श्री महेन्द्र मा.बि.)  को उल्लेख्य भौतिक पूर्वाधारका कामहरु सम्पन्नको चरणमा रहेका छन् र आगामी आ.व.मा पनि पूर्वाधारको लागि बजेट प्राप्त हुने सुनिश्चितता भएको छ ।

३३. शिक्षा क्षेत्रको सर्वत्तोमुखी बिकास एवं शैक्षिक गुणस्तर सुधारको लागि **"शैक्षिक गुणस्तर बिकास कोष"** नामक एक कोषको स्थापना गरिएको छ । जसको लागी २५ लाख विनियोजन गरेको छु ।

३४.मुसिकोटको नगरपालिकाको केन्द्र वामीटक्सारमा सुविधा सम्पन्न पुस्ताकालय निर्माण गर्ने नीति अनुरुप चालु आ.ब.मा पुस्तकालय सञ्चालनका लागि बजेट विनियोजन भएको आगामी आ.ब.मा पनि **"हाम्रो पुस्तकालय"** संचालन कार्यक्रममा बजेट विनियोजन गरेको छु ।

३५.शिक्षाबाट वञ्चित एवं पँहुच पुग्न नसकेका सम्पूर्ण बालबालिकाहरुलाई शिक्षाको मुलधारमा ल्याउने मूल नीति अनुरुप विद्यालयको पहुँच बाहिर रहेका **"अनाथ बालबालिकाहरुलाई विद्यालयको पहुँचमा"** ल्याउन आवश्यक बजेटको व्यवस्था मिलाएको  छु ।

३६. गुणस्तरीय एवं व्यावहारिक शिक्षालाई प्राथमिकतामा राखी विद्यालयहरुलाई प्रविधि मैत्री बनाउनको लागि आवश्यक पर्ने कम्प्युटर, प्रिन्टर खरिदका साथै, इन्टरनेट जडानको लागि आवश्यक व्यवस्था मिलाएको छु ।

३७. विद्यालयमा विद्यार्थीहरुका लागि अतिरिक्त क्रियाकलापमा जोड दिनुका साथै युवा लक्षित खेलकुदका कार्यक्रमहरुलाई प्राथमिकतामा राखी सञ्चालन गर्न आवश्यक बजेटको व्यवस्था गरेको छु।

३८.बिद्यालयका सहायक कर्मचारी (लेखापाल)ले खाइपाइ आएको तलवमान सामान्य बृद्धि गरीएको छ । यस नगरपालिका अन्तरगत रहेका सामुदायिक विद्यालयहरुमा रहेका प्रारम्भिक वाल शिक्षा केन्द्र शिक्षकहरुको तलब र पोशाक भत्ता रकम  वृद्धि गरी संघीय प्रारम्भिक केन्द्र शिक्षक सरह बनाइको छ । प्रधानाध्यापक वैठकको लागि यातायात खर्च वापत वजेट विनियोजन गरिएको छ ।

३९. वडा नं. ५ झक्कले भुकुवा क्षेत्रमा नगरपालिका स्तरको तालिम केन्द्र र बहुप्राविधिक शिक्षण/प्रशिक्षण केन्द्र स्थापनाका लागि पूर्वाधार विकास तर्फ संघीय सरकारवाट रु ७० लाख विशेष अनुदान प्राप्त भएको छ ।

४०. गुणस्तरिय शिक्षाको लागि बिद्यार्थीहरुलाई विद्यालयमा **“ल्याउन, टिकाउन र सिकाउन” “बिद्यालय दिवाखाजा”**को कार्यक्रमलाइ प्रभावकारी रुपमा कार्यान्वयन गर्न आवश्यक बजेट संघिय सरकारको शसर्त अनुदान कार्यक्रममा बजेट विनियोजन भएको छ ।

४१.दलित र सिमान्तकृत समुदायका छात्रा र अपाङ्गता भएका छात्र/छात्राहरुलाई उच्च शिक्षा प्रोत्साहित गर्न दलित छात्रा अपाङ्ग छात्र/छात्रा उच्च शिक्षा सहयोग कार्यक्रम अन्तर्गत रु २ लाख बजेट व्यवस्था गरेको छु ।

४२. विद्यालयहरुमा अध्ययनरत छात्राहरुलाई नि:शुल्क स्यानिटरी प्याड वितरण कार्यक्रमलाई थप प्राथमिकता दिई प्रभावकारी कार्यान्वयजको लागी आवश्यक बजेट विनियोजन गरीएको छ ।

४३. खेलकुद क्षेत्रको विकासका लागि खेलकुद मैदानहरुको निर्माण गर्ने र खेलकुद प्रतियोगिताको आयोजना गर्ने काम हाम्रो प्राथमिकताको विषय हो । आगामी आ.व.मा खेलकुदका थप कार्यक्रम संचालन गर्ने गरी वजेट व्यवस्थापन गरेको छु । वामीटक्सारमा निर्माणाधिन कभर्ड हलको लागि रु ३० लाख बजेट ब्यवस्था गरेको  छु ।

४४.अति गरिबी या विपदको कारण घर, आवास, शौचालय व्यवस्थित गर्न नसकेका नागरिकहरुलाई सहयोग दिन र घरबार विहिन बनेकालाई आवास निर्माणमा टेवा पुर्याउन आगामी वर्ष देखि **"विपद र गरिवीमा हाम्रो नगरको भरः आवास क्षेत्र र शौचालय सुधार, घर नभएकालाई घर"** कार्यक्रम मार्फत सुरक्षित आवासको हक उपलव्ध गराउन रु ३० लाख बजेट व्यवस्था गरेको छु ।

४५.शिक्षालाई प्रविधिमैत्री बनाउन आवश्यक रकम ब्यवस्था गरेको,शिक्षामा विभिन्न प्रवर्धनात्मक कार्यक्रम संचालन गरी समग्र शिक्षा क्षेत्रलाई गुणस्तरीय, प्रतिस्पर्धि र व्यावसायिक बनाउन आवश्यक बजेटको ब्यवस्था भएको छ । शिक्षा क्षेत्रमा सशर्त अनुदानको अलावा रु.२ करोड ५७ लाख ६३ हजार ३ विनियोजन गरेको छु ।

**स्वास्थ्य**

४६. आधारभूत स्वास्थ्य सेवा नागरिकको मौलिक अधिकारको विषय भएकोले स्वास्थ्य सेवालाई हरेक नागरिकको पहुँचमा राख्न तथा यो सेवा सहज सरल र सर्वसुलभ रुपमा अनुभूत हुने गरी प्रत्याभुत गर्न प्रत्येक स्वास्थ्य संस्थाहरुको सवलिकरणका लागि आवश्यक बजेट व्यवस्था गरेको छु ।

४७. स्वास्थ्य संस्थाहरुमा जस्तोसुकै अवस्थामा पनि औषधीको नियमित आपुर्ति गर्नको लागि औषधी खरिदको लागि संघिय शसर्तका अलवा रु २५ लाख ब्यवस्था गरेको छु । स्वास्थ्य सेवालाई आधुनिक र प्रविधिमैत्री बनाउनुका साथै स्वास्थ्य संस्थामा जनशक्तिको पर्याप्त व्यवस्था मिलाउनको लागि आवश्यक व्यवस्था गरेको छु ।

४८.स्वास्थ्य आमा समुह प्रबर्द्धन, महिला सामुदायिक स्वास्थ्य स्वयं सेविकाकाहरुका लागि विभिन्न प्रोत्साहन मूलक कार्यक्रमहरुका साथै उत्कृष्ट स्वयं सेविकाहरुलाई पुरस्कृतको लागि आवश्यक बजेटको व्यवस्था गरेको छु ।

४९.मातृ तथा नवशिशुको स्वास्थ्यलाई प्रथामिकतामा राखी घरमा प्रशुती हुने दरमा कमी ल्याई स्वास्थ्य संस्थामा प्रसुती हुने दरमा बृद्धी गर्नको लागी स्वास्थ्य संस्थामा सुत्केरी हुने आमाहरुलाई निःशुल्क एम्बुलेन्स सेवा उपलब्ध गराउने कार्यक्रमलाई निरन्तरता दिएको छु । **"जिरो होम डेलिभरी"** नगरपालिका घोषणाको लागी अनुशिक्षण, आवश्यक शहरी स्वास्थ्य संस्थाहरुमा बर्थिङ सेन्टर स्थापना, सन्चालन तथा प्रभावकारी सेवा प्रवाहका लागि रु ५ लाख बजेट विनियोजन गरेको छु ।

५०. गर्भवतीसँग उपप्रमुख कार्यक्रमलाई निरन्तरता दिनुका साथै कार्यक्रमलाई थप प्रभावकारी बनाउन गर्भवती र सुत्केरी आमाहरुलाई निःशुल्क क्याल्सियम चक्की वितरणका लागि रु ५ लाख विनियोजन गरेको छु ।

५१. प्राकृतिक चिकित्सा पद्धतिलाई प्रवर्द्धन गर्न र व्यवसायिक जडीबुटी खेतीलाई नगरपालिकामा एक आयुर्वेद केन्द्र स्थापना गरिनेछ, आयुर्वेदिक स्वास्थ्य केन्द्र पूर्वाधार विकासको लागि प्रदेश सरकारवाट रु १५ लाख विनियोजन भएको छ ।

५२. स्वास्थ्य संस्थाको पहुँचबाट टाढा रहेर स्वास्थ्य सेवावाट वञ्चित  नागरिकको सेवा सुविधाका निम्ती आवधिक रुपमा चिकित्सक र नियमित रुपमा सहायक चिकित्सकको सेवा सहित **"आधारभूत औषधी उपचार पाउँने जनताको आधारः वस्ती वस्तीमा डाक्टरी सेवा, घर घरमा स्वास्थ्य स्याहार"** कार्यक्रम संचालनमा ल्याइ घुम्ती अस्पताल सेवा संचालनको लागि रु १५ लाख बजेट विनियोजन गरेको छु ।

५३. बिशेषज्ञ सेवा सहितका विभिन्न किसिमका स्वास्थ्य शिविरहरु संचालनका लागि आवश्यक बजेट विनियोजन गरेको छु । साथै प्रदेश सरकारसंगको समन्वयमा जेष्ठ नागरिकहरुको नियमित स्वास्थ्य परिक्षणको लागी आवश्यक व्यवस्था मिलाएको छु ।

५४. बहु क्षेत्रीय पोषण कार्यक्रमलाई समन्वयात्मक ढंगले कार्यान्वयन गरिने छ, यसको लागि संघ तथा प्रदेश सरकारको तर्फबाट आवश्यक बजेटको ब्यवस्था भएको छ ।

५५. समग्र स्वास्थ्य सेवा तर्फ सशर्त वाहेक समानीकरण अनुदानबाट रु. २ करोड २३ लाख ६४ हजार विनियोजन गरेको छु ।

## सामाजिक सुरक्षा तथा संरक्षण

५६. सामाजिक सुरक्षा भत्ता वितरण कार्यक्रमलाई प्रबिधि मैत्री बनाउने काम सम्पन्न भएको छ । यसले गर्दा सेवाग्राहीले सुलभ ढंगबाट यो सुबिधा लिने सुनिश्चितता भएको छ । चालु आ.ब.देखि नै नगरपालिकाको आर्थिक सहयोग र बैक वित्तिय संस्थाको समन्वयमा सामाजिक सुरक्षा भत्ता टोलमै पुगेर वितरण गर्ने व्यवस्था मिलाईएको छ । आगामी आ.ब.मा पनि यसलाई निरन्तरता दिइनेछ ।

५७. सामाजिक सुरक्षा तथा ब्यक्तिगत घट्ना दर्ता प्रणाली सुदृढिकरण आयोजना अन्तर्गत सशर्त अनुदान तर्फ प्राप्त बजेट बमोजिमको कार्यक्रम प्रभावकारी रुपमा संचालन गरिने छ ।

५८. परम्परागत पेशा व्यवसाय अपनाइ पुस्तान्तरण गर्ने शिल्प व्यवसायीलाई सम्मान र प्रोत्साहनको लागि रु २ लाख रकम छुट्याएको छु ।

५९. अपाङ्गता भएका व्यक्तिहरुको अधिकारलाई संरक्षण गर्दै अपाङ्गता परिचयपत्र वितरण, नविकरण र सहायक सामाग्री वितरण लगायत अपाङ्ग लक्षित कार्यक्रमको निरन्तरताको लागि रु ३ लाख रकम छुट्टाएको छु ।

## खानेपानी तथा सरसफाई

६०. हाम्रा आफ्नै एवं संघ र प्रदेश सरकार समेतको सहकार्यमा खानेपानीका गौरबका आयोजनाहरु सम्पन्न भएका छन् र सम्पन्नको चरणमा छन् । हामी मुसिकोट नगरपालिकालाई एक घर एक धारा युक्त नगरपालिका घोषणा गर्ने अन्तिम चरणमा छौं । यसको लागि आवश्यक रकमको व्यवस्था मिलाएको छु ।

**लैंगिक समानता तथा सामाजिक समावेशीकरण**

६१. समाज रुपान्तरणको प्रमूख पक्ष सामाजिक परिचालन र सामाजिक सांस्कृतिक ऐक्यबद्धता भएकोले यस पक्षमा विशेष ध्यान दिंदै टोल बिकास संस्था तथा परिचालनलाई थप व्यवस्थित बनाइने छ ।

६२. नगरपालिकाको टोल, वडास्तरमा महिला समूह, समिति र सहकारी संस्था स्थापना गरी महिलाहरुको सशक्तिकरण तथा आयआर्जनमा बृद्धि गर्न, लैंगिक हिंसा, घरेलु हिंसा सम्बन्धी जनचेतनामूलक कार्यक्रम संचालन गरी हिंसा विरुद्धको कानूनलाई कडाइका साथ कार्यान्वयनमा जोड दिन, महिलाहरुको क्षमता अभिवृद्धिका लागि सीपमूलक, चेतनामूलक कार्यक्रम संचालन गर्नमहिला तथा बालबालिका लक्षित कार्यक्रमको लागी आवश्यक बजेट विनियोजन गरेको छु ।

६३. यो नगरपालिका विविध संस्कृतिको संगम भएको नगरपालिका हो, यहाँको समुदायमा विविध जात जातीहरु विभिन्न धर्मावलम्वीको वासस्थान भएकोले सामाजिक सांस्कृतिक सद्भाव, समन्वय रसाझेदारीताको लागि चालु आ.व.मा नै केही कार्यक्रमहरु शुरु गरिएकोमा आगामी आ.ब मा पनि यस्ता कार्यक्रमहरुलाई निरन्तरताको व्यवस्था गरेको छु । परम्परागत संस्कृतीहरुको उन्नयन गर्न आवश्यक बजेटको ब्यवस्था गरेको छु ।

६४. आदिवासी जनजाती तथा दलित लक्षित परम्परागत शीप तथा संस्कृति संरक्षण कार्यक्रमको लागी रु २ लाख विनियोजन गरेको छु ।

६५. विभिन्न शिपमुलक तालिम, अभिमुखीकरण कार्यक्रम,अन्तरक्रिया कार्यक्रम, जातिय भेदभाव बिरुद्ध कानूनी सचेतना कार्यक्रमको लागि बित्तिय समानिकरण तर्फ आवश्यक बजेट विनियोजन गरेको छु ।

६६. सामाजिक बिकास तर्फ संघ एवं प्रदेश तर्फको शसर्त र अन्य अनुदानका अतिरिक्त रु ५ करोड ६९ लाख ७७ रकम ब्यवस्था गरेको छु । जुन कुल नगर तर्फको बजेटको १९ प्रतिशत हुन आउँदछ ।

**वन वातावरण तथा विपद् व्यवस्थापन**

६७. बिपदबाट बच्न र जनधनको क्षतिवाट बचाउन नगरपालिका स्तरिय बिपद् ब्यवस्थापन समितिलाई चुस्त र दुरुस्त बनाउनुका साथै अन्य सहयोगी संस्थाहरुको साथ र सहयोग लिईने छ । बिपद् प्रतिकार्य योजना बनाउने काम सम्पन्न भएको छ । बिकास निर्माणलाई वातावरणसंग सन्तुलन कायम गर्न जोड दिईनेछ । वातावरण र जैविक विविधताको संरक्षण, सम्वर्धन, प्रवर्धन र सदुपयोगमा जोड दिइने कार्यलाई प्राथमिकता दिईनेछ ।

६८. मानबीय सीप, स्थानिय श्रोत, साधनको प्रयोगलाई प्रोत्साहन गर्न अत्यावश्यक वाहेक हेभी उपकरणको प्रयोगलाई निरुत्साहित गरिनेछ । प्रचलित कानून बमोजिम डि.पि.आर.,आई.ई.ई. र माटो परिक्षण गरेर मात्र भवन बनाउने, सडक खन्ने, माटो, बालुवा, ढुङ्गा उत्खनन गर्ने कार्य गरिनेछ ।

६९. फोहरमैला प्रशोधन तथा ब्यवस्थापनको लागि डम्पीङ साईट निर्माण संभाव्यता अध्ययन सम्पन्नको चरणमा रहेको अवस्थामा "**डम्पिङ साईट निर्माणको**" लागि जग्गा प्राप्तीको लागि आवश्यक रकम ब्यवस्था गरेको छु ।

७०. विपदबाट आइपर्ने सम्भाबित जोखिम न्यूनिकरण तथा पूर्वतयारीका लागि **"विपद् व्यवस्थापन कोष"** मा रु ६० लाख बजेट विनियोजन गरेको छु । साथै आकस्मिक अवस्थामा नागरिकको गास, वास, कपासको सुनिश्चितताको लागी**"खाद्य बैंक तथा कपडा बैंक"** स्थापना गरि संचालनमा ल्याउनको लागि आवश्यक रकमको व्यवस्था गरेको छु ।

७१. पूर्ण सरसफाईयुक्त नगरको अवधारणालाई संस्थागत रुप दिनको लागी "**अति गरिब घरपरिवारको पहिचान गरी शौचालय निर्माण, खानेपानीरविद्युत जडान"** जस्ता योजना कार्यान्वयनका निम्ति रु ३० लाख विनियोजन गरेको छु ।

७२. मुसिकोट नगरपालिका अन्तर्गत चट्याङ्को उच्च जोखिममा रहेका सामुदायिक विद्यालयहरुमा चट्याङ् प्रतिरोधी उपकरण जडान गर्न आवश्यक बजेट व्यवस्था गरेको छु ।

७३. वन तथा वातावरण क्षेत्रको संरक्षण एवं प्रवर्द्धन गर्नका निम्ति वृक्षारोपण अभियान, भू संरक्षण कार्यक्रम, रिचार्ज पोखरीहरुको निर्माणका लागि आवश्यक बजेट विनियोजन गरेको छु ।

७४.वातावरण संरक्षणको क्षेत्रमा उल्लेख्य काम गर्ने ब्यक्ति/संस्थालाइ प्रोत्साहन गर्न आवश्यक रकम व्यवस्था गरेको छु ।

७५. चौपारी/पोखरी/धारा र ट्रष्ट निर्माण, वन उपभोक्तासंग अन्तरक्रिया लगायतका गतिबिधिको कार्यान्वयन गर्न आवश्यक बजेटको ब्यवस्था गरिएको छ । बाढी, पहिरो तथा भू-क्षयका जोखिमयुक्त क्षेत्र पहिचान गरी कमजोर भू-बनोट भएका क्षेत्रहरुमा बायो-इन्जिनियरिङ्ग प्रविधि प्रयोग गरी विपद् जोखिम न्यूनिकरणको लागी आवश्यक बजेटको व्यवस्था गरेको छु ।

७६. खानेपानीलाई सरसफाइसँग जोडेर स्वास्थ्य र पूर्ण सरसफाईयुक्त नगरपालिका बनाउन संघिय सरकारवाट बिशेष अनुदानका अतिरिक्त अन्य अनुदान र नगरपालिकाको तर्फवाट आवश्यक बजेट ब्यवस्था गरेको छु ।

**कानून तथा न्याय**

७७. राज्य शक्तिको प्रयोग कार्यपालिका, ब्यवस्थापिका र न्याय पालिका मार्फत स्थानिय तहवाट समेत हुने व्यवस्था अनुरुप न्यायिक समितिलाई सक्षम र क्षमतावान वनाइने छ । कानुन तथा न्याय सम्पादनको लागी मेलमिलापकर्ताको पारिश्रमिक र तालिमको लागी रु ६ लाख विनियोजन गरेको छु ।

**पुर्वाधार विकास**

७८. विकास र वातावरणलाई तादाम्यता कायम गरी पूर्वाधार विकासको कामलाई अगाडि बढाईने कुरा नीति तथा कार्यक्रममा प्रस्तुत भईसकेको छ । सडक सञ्जाल ब्यापक विस्तार भईसकेको सन्दर्भमा सो को स्तरोन्नती गर्न संघ र प्रदेश सरकारसँग विशेष पहल गरिनुका साथै नगरपालिकाको आफ्नो श्रोत

परिचालनमा विशेष जोड दिईने छ । आगामी आ.ब.मा मुसिकोट नगरपालिकाको सडक गुरुयोजना तयार गरि कार्यन्वयनमा ल्याइनेछ ।

७९. "**हाम्रो सडक, हाम्रो सहभागिता, स्तरीय सडक, हाम्रो प्रतिवद्धता**"अनुरुप नगरपालिका भित्रका सडकहरुमा सडक बोर्ड नेपाल,प्रधानमन्त्री रोजगार कार्यक्रम,निरन्तर रोजगार,निरन्तर निर्माण तथा मर्मत सुधार कार्यक्रम र स्थानीय जनताहरुको सहभागितामा नाली निर्माण कार्यक्रमलाई जोड दिन आवश्यक बजेटको व्यवस्था मिलाएको छ ।

८०. विकासका सबै आयामहरुले समेटिएको विकासको निम्ति "दीगो विकासका लक्ष्यहरु"साथै नगरपालिकाको आवधिक योजना र मध्यमकालीन खर्च संरचना तर्फ केन्द्रित रही गतिविधिहरु अगाडी बढाइएको छ ।

८१. गत आ.व.मा संझौता भई कार्यान्वयनमा रहेको नगरपालिकाको प्रशासकीय भवन बहुवर्षिय ठेक्का भएको, नगर र संघिय सरकारको ५०/५०को लगानीमा निर्माण हुने भएकोले आगामी आ.व.को लागि रु १ करोड बजेट छुट्टाएकोछु । त्यस्तै बिभिन्न पक्षहरुबाट लगानीको लागि साझेदारी गर्न रु ५० लाख ब्यवस्था गरिएको छ । आगामी आ.व.को अनिवार्य दायित्वको रुपमा स्वास्थ्य चौकी भवन वडा नं.४ को लागि रु ३५ लाख र स्वास्थ्य चौकी भवन वडा नं.८ का लागि रु ३३ लाख बजेट ब्यवस्था गरेको छु

८२. त्यसैगरी नगरपालिकाको वडा नं ७ वामीटक्सार मा निर्माणाधिन कवर्ड हल निर्माणको लागि रु ३० लाख बजेटको व्यवस्था गरेको छु ।

८३. मुसिकोट नगरपालिकाका सबै बस्तिहरुलाई सडक सन्जालले जोड्ने परिकल्पना गरिए बमोजिम मुसिकोटको गौरबको रुपमा रहेको नगरपालिकाका वडा नं १, २, ३ र ४ समेट्ने भन्ज्याङ-निस्ती-पौँदी अमराइ-अरेवा-राक्से सडक स्तरोन्नतीको लागि रु ५० लाख र दोभान-राक्से-लिलिङ्ग कृषि सडक स्तरोन्नतीको लागि रु १ करोड ३५ लाख गरी संघीय समपुरक अन्तर्गत जम्मा रु १ करोड ८५ लाख विनियोजन भएकोमा नगरपालिकाको तर्फबाट थप १ करोड ८५ गरी आगामी आ.व.मा उक्त सडकहरुमा कुल ३ करोड ७० लाखको पूर्वाधार विकास सम्बन्धी कार्य हुनेछ ।

८४. प्रदेश समपुरक अन्तर्गत वामी-पैयापाटा-वामीमैदान-अर्लाङ्गकोट ददल्का मोटर बाटो, भराह-जलजले खस्थोक-देउराली-झेदी सडक, भुवाचिदी-कुर्घा-मालिका सडक, तल्लाफाँट-आँपचौर-खर्वाङ्ग सडक स्तरोन्नती र बहुउद्देश्यीय सभाहल वडा नं. ७ को लागि प्रदेश समपुरक अन्तर्गत रु ३ करोड बजेट विनियोजन भएको छ ।

८५. मुसिकोट नगरपालिका अन्तर्गतका सडक तथा सार्वजनिक स्थलहरुको सौन्दर्यिकरण गर्न रु १० लाख बजेट व्यवस्था गरेको छु ।

८६. वातावरणिय प्रभावको मूल्याङ्कन गरी सडकहरुलाई प्राथमिकताका आधारमा स्तरोन्नती गर्दै लगिने छ । आवश्यक स्थानमा कल्भर्ट निर्माणलाई प्राथमिकता दिइने छ । नगरपालिका क्षेत्रभित्रका भित्रि बाटोहरुमा नालीको व्यवस्था गरी बर्षायाममा समेत ग्रामिण यातायातको सुनिश्चितता गरिने कामलाइ मर्मत संभार कोष मार्फत प्राथमिकता दिइने छ । मर्मत संभार कोषको लागी रु २० लाख रकमको व्यवस्था गरेको छु ।

८७.सडक लगायत निर्मित सार्वजनिक सम्पत्तिको संभार एवं मर्मत संभारको साथै आकस्मीक सडक मर्मत एवं अवरुद्द सडक संचालन गर्न यही कोषको परिचालन गरिने छ ।

८८. नगरपालिकाभर ७५/२५प्रतिशत जनसहभागिता जुटाई सिंचाई गर्नका लागि कुलोहरु निर्माण, मर्मत तथा व्यवस्थापन गर्ने काम प्राथमिकताका साथ अगाडी बढाई सकिएको छ । सिंचाइको निम्ती महत्वपूर्ण योजनाहरु कार्यान्वयन गर्न १८ लाख बजेट विनियोजन गरेको छु ।

८९. त्यसैगरी सञ्चार क्षेत्रको विकासको लागि आवश्यक व्यवस्था मिलाएको छु ।

९०. पूर्वाधार बिकासमा संघ र प्रदेश सरकारको तर्फवाट प्रशस्त कामहरु भइरहेका र सम्पन्नको चरणमा रहेका छन् । बिद्यालय पूर्वाधार पुनःनिर्माण तर्फ, राष्ट्रपति शैक्षिक सुधार, मुख्यमन्त्रीशैक्षिक सुधार लगायत सडक निर्माणका कार्यहरु भइरहेको ब्यहोरा यस सम्मानित सभामा जानकारी गराउन चाहन्छु । त्यस्तै प्रधानमन्त्री रोजगार कार्यक्रम र सडक बोर्डको कार्यक्रमलाइ पूर्वाधार बिकास कार्यक्रममा आबद्द गरिने ब्यहोरा प्रतिबद्दता ब्यक्त गर्दछु । त्यसैगरी नगरपालिकामा निर्मित सार्वजनिक सम्पतिको सम्भारका लागि रु १० लाख बजेटको व्यवस्था गरिएको छ ।

९१. बिद्युत आपूर्तिलाई भरपर्दो बनाउन नगरपालिकाको मुकाम लगायत अन्य बस्तीहरुमा राष्ट्रिय प्रशारण लाईनको विस्तार गरिएको र बिस्तार हुन नसकेका अन्य वस्तीहरुमा पनि राष्ट्रिय प्रशारण लाईनको विस्तारलाइ थप निरन्तरता दिइने छ । सामूदायिक ग्रामिण बिद्युतिकरण तर्फ प्रणाली सुदृढिकरण र क्षमता अभिबृद्दि गर्ने कार्यलाइ प्राथमिकता दिइने छ । नगरपालिका भित्र रहेका सम्पूर्ण साना तथा लघु जलविद्युत आयोजनाहरुलाई एकीकृत राष्ट्रिय प्रशारण लाइनमा जोड्नका लागि आवश्यक कार्य गरिनेछ ।

९२. उज्यालो नगरपालिका अन्तर्गत बैकल्पीक उर्जाको माध्यमवाट सौर्य सडक बत्ति जोड्ने कामलाइ चालु आ.व.मा कतिपय वडाका महत्वपूर्ण स्थानहरुमा जडान गरिएको र यस लाइ निरन्तरता दिंदै अझ बिस्तार गर्न बैकल्पीक उर्जा प्रबर्धन केन्द्रसंग समन्वय गरिने छ । उक्त कार्यको लागि संघीय शसर्त अन्तर्गत रु ९ लाख विनियोजन भएकोमा नगरपालिकाबाट समेत थप बजेट व्यवस्था गरेको छु ।

९३. पूर्वाधार बिकास तर्फ आगामी आ.व. २०८०/०८१ को लागी जम्मा रु ११ करोड ८९ लाख २३ हजार ८ सय ९३ बजेटको ब्यवस्था गरेको छु । जुन कुल नगर तर्फको बजेटको ४५ प्रतिशत हुन आउँदछ ।

**संस्थागत विकास, सेवा प्रवाह र सुशासन**

९४. स्रोतमा परेको चापलाई मध्यनजर गरी आगामी आर्थिक वर्षका लागि सबै प्रकारका प्रोत्साहन भत्ता, अतिरिक्त समय भत्ता लगायतका भत्ता लाई न्युनतम सिमामा कायम गरेकोछु । अत्यावश्यक बाहेक सवारी

साधन ,फर्निचर तथा फर्निसिङ खरिद गरिने छैन। इन्धन, कार्यालय सम्बन्धी सामान लगायत प्रशासनिक खर्चमा मितव्ययिता कायम गरिनेछ ।

९५. सार्वजनिक प्रशासनलाई छरितो, मितव्ययी र परिणाममुखी बनाउन नतिजामा आधारित कार्यसम्पादन प्रणाली विकास गरी सार्वजनिक प्रशासनलाई जवाफदेही र परिणाममुखी बनाइनेछ ।

९६. जनताको घरदैलोको सरकारको रुपमा रहेको नगरपालिकामा दरबन्दी बमोजिम स्थायी पदपूर्ती नहुँदा सेवा प्रवाहमा प्रत्येक्ष प्रभाव परेको कुरालाई नकार्न सकिदैन । रिक्त दरबन्दीमा पदपूर्तीको लागि लोकसेवा आयोगमा लेखि पठाइएकोमा आगामी आ.व.मा आवश्यक कर्मचारीहरुको पदपुर्ति भई नगर कार्यपालिकाको कार्यालय र वडा कार्यालय मार्फत हुने सेवा प्रवाह थप व्यवस्थित सर्वसुलभ र प्रभावकारी हुने कुरामा विश्वस्त छु ।

९७. जनताको नजिकको सरकारको पहिचान दिने सेवा प्रवाह इकाइहरु वडा कार्यालय हुन । यि कार्यालयको व्यवस्थापकिय पक्षमा बिशेष ध्यान दिइने छ ।

९८. सेवाग्राहीलाई सम्मान पूर्वक सेवा प्राप्त गर्ने हक स्थापित गरिने छ । कर्मचारीको क्षमता अभिबृद्धि गर्न र प्रोत्साहन मूलक गतिबिधिको लागि  बजेटको ब्यवस्था गरेको छु ।

९९. कार्यालयको कामलाई सूचना प्रविधि मैत्री बनाई पछिल्लो प्रविधिको प्रयोगलाई विशेष प्राथमिकता दिईने छ । निर्णय प्रक्रियालाई छिटो छरितो बनाई सरकारी काममा ढिला सुस्ती हुन दिईने छैन् । कागजी कामलाई क्रमश: न्यून गर्दै लगी प्रविधिको प्रयोगलाई अत्यधिक महत्व दिईने बिषयलाइ प्राथमिकता दिइने छ । यसको लागि रु ३१ लाख बजेट विनियोजन गरेको छु ।

१००. प्राबिधिक शाखा, योजना शाखा र खरिद ईकाई र अन्य बिषयगत शाखाहरुलाइ थप क्षमतावान बनाई परिणाम मुखि बनाउन सो अनुरुप बजेटको ब्यवस्था गरेको छु ।

१०१. कार्यालयमा वार्षिक कार्यक्रम तथा बजेट, पुस्तिका प्रकाशन, जानकारी मूलक प्रकाशनहरु, स्थानीय पत्रपत्रिका, वेवसाईट अध्यावधिक, एफ.एम मार्फत गतिविधिहरु सार्वजनिकीकरण, कार्यालयका गतिविधिहरुलाई चौमासिक समिक्षा गोष्ठी, सार्वजनिक सुनुवाई, सार्वजनिक लेखापरिक्षण, कार्यालयमा सूचना पाटी, सेवाग्राहि सहायता कक्षको ब्यवस्था लगायतका सुशासनसंग सम्वन्धित कुराहरुलाई प्रभावकारी बनाउन आवश्यक बजेटको ब्यवस्था गरेको छु ।

१०२. नागरिक वडापत्रको प्रभावकारी कार्यान्वयनको लागि सचेतना अभियान संचालन गरिनेछ । वडा कार्यालय,स्वास्थ्य संस्था,विद्यालयहरुमा सूझाब पेटिका राख्ने, नागरिक वडापत्र राख्नेर सूचना अधिकारी तोक्ने कार्यलाई अनिवार्य गरिनेछ ।

१०३. सुशासन प्रबर्धनका निमित्त नगर कार्यपालिकाको कार्यालयका गतिबिधिहरुलाई सेवाग्राहि र अन्य सेवाग्राहीले देख्न र हेर्न सक्ने गरी वेभसाइट अद्याबधिक र सुचना पाटी अद्याबधिक, इ-मेल, फेसबुक अद्याबधिक, सेवाग्राही सन्तुष्टी फाराम जस्ता बिषयहरुलाई उच्च प्राथमिकताका साथ निरन्तरता दिइनेछ र

सुशासन प्रबर्धनमा बिशेष प्राथमिकता दिईने छ। मुसिकोट नगरपालिका भित्रका वडा कार्यालय, स्वास्थ्य संस्था र विद्यालयहरुमा जडित बिद्युतिय हाजिरीलाई अनिवार्य रुपमा संचालन गरिने छ।

१०४. नगरपालिकाको सार्वजनिक सेवा प्रवाहलाई व्यवस्थित, प्रभावकारी बनाउन र आन्तरिक सुरक्षा व्यवस्थापनलाई थप मजबुत बनाउन चालु आ.व. देखि नै नगर प्रहरीको व्यवस्था मिलाई सकिएको छ। नगर प्रहरी व्यवस्थापनको लागि रु १५ लाख विनियोजन गरेको छु।

१०५. यस नगरपालिका भित्र सामाजिक परिचालनको माध्ययमबाट जनतालाई प्रत्यक्ष रुपमा देख्न र अनुभूत गर्न पाउने स्थानीय सरकारको आभाष दिलाउनको लागि सामाजिक परिचालनको क्षेत्रमा आवश्यक वजेट विनियोजन गरेको छु।

१०६. यसै सम्मानित सभा समक्ष आजको पहिलो कार्यसूचिमा पेश भएको नीति तथा कार्यक्रम नै हाम्रो आर्थिक वर्ष २०८०/०८१ को बजेट तथा कार्यक्रमको मूख्य आधार भएकोले नीति तथा कार्यक्रममा उल्लेख भई छुट हुन गएका कतिपय विषयहरु यसै बजेट तथा कार्यक्रममा समाबेश गरी कार्यान्वयन गरिने ब्यहोरा यस सम्मानित सभा समक्ष जानकारी गराउन चाहन्छु।

१०७. संस्थागत विकास, सेवा प्रवाह, सुशासन र अर्तरसम्बन्धीत क्षेत्रको लागि संघ, प्रदेश र अन्य बिषयगत क्षेत्रका अतिरिक्त आगामी आ.व. २०८०/०८१ को लागी रु ८ करोड ७० लाख बजेट ब्यवस्था गरेको छु।

सभाध्यक्ष महोदय,
सभासदस्य ज्यूहरु,
उपस्थित महानुभावहरु,

अन्त्यमा,

१०८. नेपालको संविधानले परिकल्पना गरेको समाजवाद उन्मुख अर्थतन्त्रको निर्माणमा टेवा पुर्याउने र दिगो बिकासका लक्ष्यहरु समेटिएको "समृद्द नेपाल, सुखि नेपाली" को राष्ट्रिय आकाङक्षा पुरा गर्ने उद्देश्यका साथ तर्जुमा गरिएको यस बजेटको प्रभावकारी कार्यान्वयन गर्न सरोकारवाला सबैमा हार्दिक अपिल गर्दछु।

१०९. यस सम्मानित सभामा प्रस्तुत प्रस्तावित बजेट तर्जुमा गर्न र मुसिकोटको समष्टिगत विकासका लागि सहयोग पुर्याउने नेपाल सरकार, संघीय मामिला तथा सामान्य प्रशासन मन्त्रालय, लुम्बिनी प्रदेश सरकार, राष्ट्रिय योजना आयोग, प्रदेश योजना आयोग, नेपाल सरकारका विषयगत मन्त्रालयहरु, दातृ निकायहरु, नीजि क्षेत्र, नागरिक समाज, बुद्धिजीवि, पत्रकार, नगर कार्यपालिकाको कार्यालय, वडा कार्यालय, स्वास्थ्य संस्था, बिद्यालयहरु लगायतका सम्पूर्ण संस्थाहरुमा कार्यरत कर्मचारीहरु, सम्पुर्ण नागरिकहरु प्रति धन्यबाद

दिंदै विकासका हरेक अभियानमा निरन्तर सहयोगको अपेक्षा गर्दै प्रस्तुत बजेट तथा कार्यक्रमहरुको सफल कार्यान्वयनको लागि सबै पक्षको सहयोग प्राप्त हुने अपेक्षा राखेको छु। सम्पूर्ण मुसिकोट बासी दिदी बहिनी तथा दाजुभाईलाई बिपद्जन्य जोखिमवाट सुरक्षित रहँदै सामाजिक एकता र ऐक्यबद्दता कायम राख्दै सबल, सक्षम, सुदृढ र न्यायपूर्ण मुसिकोट निर्माणमा योगदान गर्न म आव्हान आह्वान गर्दछु।

आर्थिक तथा सामाजिक विकास मार्फत समृद्धि हासिल गर्ने तथा सुशासन र सामाजिक न्याय प्रत्याभूत गर्दै समुन्नत नगर निर्माण गर्ने ध्येयका साथ प्रस्तुत गरिएको यस बजेटको कार्यान्वयनमा सम्बद्ध सबै पक्षबाट रचनात्मक सहयोग प्राप्त हुने विश्वास लिएको छु।

धन्यबाद ।

गंगा श्रेष्ठ
नगर उपप्रमुख
मुसिकोट नगरपालिका
वामीटक्सार, गुल्मी।
२०८०।०३।१०